**नेपाल संवत् ११४१ गुंला ४**
**२०७८ साउन ७**

श्री शाखा अधिकृतज्यू,
तथ्याङ्क, विश्लेषण तथा प्रकाशन शाखा,
महिला, बालबालिका तथा ज्येष्ठ नागरिक मन्त्रालय,
सिंहदरबार, यें (काठमाडौँ) ।

**विषय : मिति २०७७/११/११ गतेको चनं ४२ को पत्र सम्बन्धी ।**

समलिङ्गी विवाह सम्बन्धमा हामीले यहाँको मिति २०७७/११/११ गतेको चनं ४२ को पत्र प्राप्त गर्यौं र सोही सम्बन्धमा लेख्दैछौँ ।

**१) अवधारणागत स्पष्टता**

१.१ सर्वप्रथम त लैङ्गिक तथा यौनिक अल्पसंख्यक भन्नाले के हो र अन्तर्राष्ट्रिय एवं राष्ट्रिय प्रचलनमा समेत रहेको यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता (SOGIESC) भन्नाले के हो भन्ने अवधारणागत तहमा स्पष्टता हुनुपर्छ । यो आधारभूत अवधारणा बुझ्न सकिए मात्र यस विषयमा अघि बढ्न सकिन्छ वा बुझेर मात्र अघि बढ्नु उचित हुन्छ ।

१.२ यस सम्बन्धी हामीहरूले विगत धेरै वर्ष देखि अध्ययन अनुसन्धान गरेर नेपाली भाषामा यी विभिन्न शब्दावली एवं तिनका परिभाषाहरू समेटेर पुस्तक प्रकाशनमा ल्याएकाछौँ । आइएसबिएन 978-9937-0-8469-7 रहेको 'यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता (यौभिकयौता) : आधारभूत अवधारणा' नामको उक्त पुस्तक यस मन्त्रालय तथा कानून न्याय तथा संसदीय मामिला मन्त्रालयमा समेत हामीले पठाइसकेका छौँ । RD774052905NP हुलाक टिकट रहेको पत्र मार्फत् यस मन्त्रालयमा 2021 March 19 मा पुगेको भनि हुलाक कार्यालयको वेबसाइटमा रहेको Domestic Tracking ले देखाउँछ । RD774053870NP हुलाक टिकट रहेको पत्र मार्फत् कानून न्याय तथा संसदीय मामिला मन्त्रालयमा पनि पठाइसकेका छौँ । उक्त पुस्तकको ई-प्रति यस लिङ्कबाट पनि साभार गर्न सकिन्छ ।

https://nepalcfc.org/wp-content/uploads/Basic_SOGIESC_Nepali.pdf

## २) औपचारिक परिभाषा कायम हुनुपर्ने

२.१ नेपालको संविधान २०७२ मा 'लैङ्गिक तथा यौनिक अल्पसंख्यक' भनि उल्लेख गरेतापनि 'लैङ्गिक तथा यौनिक अल्पसंख्यक'लाई कसरी परिभाषित गर्ने ? यस भित्रको विविधतालाई कसरी परिभाषित गर्ने ? यस विषयसँग सम्बन्धित शब्दावली एवं परिभाषाहरू केकस्ता छन् ? यसको बारेमा नेपालको कुनै पनि ऐन कानूनले परिभाषा गरेको छैन । त्यसैले 'लैङ्गिक तथा यौनिक अल्पसंख्यक' र यससँग सम्बन्धित विभिन्न शब्दावलीहरूको परिभाषालाई पनि औपाचरिक मान्यता / आधिकारिकता दिन अत्यन्तै महत्वपूर्ण छ । यी शब्दावली तथा परिभाषाहरू संस्थागत भएमा मात्र समग्र नीतिनिर्माण तर्जुमाका लागि सरल र सहयोगी हुनेछ । हामीले माथि १.२ मा उल्लेख गरेको पुस्तकबाट नै शब्दावली तथा परिभाषा साभार गरि औपचारिक मान्यता प्रदान गरिपाउँ भनि हामी निवेदनार्थ छौँ ।

२.२ यद्यपि हामी यस विषयमा पनि प्रकाश पार्न चाहन्छौँ । संविधानमा प्रयुक्त 'लैङ्गिक तथा यौनिक अल्पसंख्यक' शब्दावली आफैमा अनुचित, अस्पष्ट र आलोचनापूर्ण शब्दावली हो । यो शब्दावलीको सम्बन्धित समुदायमा विरोधाभास समेत रहेको जानकारी गराउन चाहन्छौँ । दीर्घकालीन समस्या समाधान र अवधारणागत स्पष्टतालाई समेत मध्यनजरमा राखि 'लैङ्गिक तथा यौनिक अल्पसंख्यक' शब्दावलीलाई 'सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषताका व्यक्ति' शब्दावलीले प्रतिस्थापन गर्नुपर्ने समेत हाम्रो माग रहेको पनि जानकारी गराउन चाहन्छौँ ।

## ३) लैङ्गिकता निर्बाधात्मक विवाह र वैवाहिक समानता हुनुपर्ने

३.१ नेपालको वैवाहिक कानूनमा कुनै वयस्क दुई व्यक्तिहरूले विवाह गर्न चाहेमा नीजहरूको जात, जातीयता, भाषा, क्षेत्र, वर्ण, आर्थिक अवस्था, अपाङ्गता, इत्यादि आधारमा कानूनी बाधाहरू छैनन् । त्यसै गरि लैङ्गिकताको आधारमा जुन मौजुदा कानूनी बाधा छ, त्यसलाई फुकाउ गरियोस् भन्ने माग हो । लैङ्गिक तटस्थ भाषाको प्रयोग गरि 'महिला र पुरुष बीचको विवाह' नभनि 'दुई वयस्क व्यक्तिहरू बीचको विवाह' भन्ने प्रकारको भाषाको प्रयोग गर्दा यसले सबैलाई समेट्छ ।

३.२ पत्रको बुँदा ४ सँग पनि सम्बन्धित रहि शब्दहरूक तर्जुमा गर्दा –

(क) समलिङ्गी विवाह (Same-sex marriage): यो शब्दावली पुरानो वा outdated भइसक्यो । यो हाल प्रचलनमा छैन वा हराउने अवस्थामा छ । विवाह व्यक्ति-व्यक्ति बीच हुने सम्बन्ध हो र यौनाङ्ग-यौनाङ्ग बीच हुने

सम्बन्ध होइन । यो शब्दावलीले शिश्न-शिश्न र योनी-योनी बीचको विवाह भन्ने अर्थ्याउँछ । यस्तो यौनाङ्ग केन्द्रित शब्दावलीले पारलैङ्गिक तथा अन्तरलिङ्गी व्यक्तिहरूलाई वहिष्करणमा पार्दछ ।

(ख) समलैङ्गिक विवाह (Same-gender marriage): यो शब्दावलीले लिङ्ग भन्दा पनि लैङ्गिकतालाई जनाउँछ । यसको अर्थ दुई पुरुषहरू बीच र दुई महिलाहरू बीचको विवाह साथै दुई गैर-द्वयसांखिक व्यक्तिहरू बीचको विवाह भन्ने बुझाउँछ । यो शब्दावली प्रचलनमा रहेकै शब्दावली हो ।

(ग) लैङ्गिकता निर्बाधात्मक विवाह (Marriage without a gender barrier): कुनै निश्चित लैङ्गिकताका व्यक्तिहरूले कुनै निश्चित लैङ्गिकताका व्यक्तिसँग मात्र विवाह गर्न पाउने व्यवस्थलाई प्रतिस्थापन गरि लैङ्गिकताको बाधा हटाउनुपर्ने नै हाम्रो माग हो । जसकारण हामी वैवाहिक समानता (Marriage Equality) हासिल गर्न सक्छौं । यसले समलैङ्गिक विवाहमा जस्तै महिला र महिला बीच, पुरुष र पुरुष बीच वा गैर-द्वयसांखिक व्यक्ति र गैर-द्वयसांखिक व्यक्ति बीच मात्र नभएर मौजुदा महिला र पुरुष बीचको विवाहका साथै महिला र महिला बीच, महिला र गैर-द्वयसांखिक व्यक्ति बीच, पुरुष र पुरुष बीच, पुरुष र गैर-द्वयसांखिक व्यक्ति बीच, एवं गैर-द्वयसांखिक व्यक्ति र गैर-द्वयसांखिक व्यक्ति बीचको विवाहलाई पनि समेट्ने भयो ।

**४) अलग्याउने र अन्यकरण गर्ने कार्य नगर्ने**

४.१ लैङ्गिक तथा यौनिक अल्पसंख्यक जनसंख्या अलग्याउनु पर्ने जनसंख्या होइन । अपाङ्गता भएका व्यक्तिहरूको लागि विवाहको छुट्टै / अलगै ऐन कानून छैन / हुँदैन । अन्तर्जातीय विवाहको लागि छुट्टै / अलगै ऐन कानून छैन / हुँदैन । अन्तर्धार्मिक विवाहको लागि छुट्टै / अलगै ऐन कानून छैन / हुँदैन । दलित समुदायको विवाहको लागि छुट्टै / अलगै ऐन कानून छैन / हुँदैन । वा त्यसै गरि आदिवासी जनजाती समुदायको लागि, लोपन्मुख जातीका लागि, इत्यादिको आधारमा छुट्टै विवाहको कानून छैन । 'लैङ्गिक तथा यौनिक अल्पसंख्यक' विवाह भनेर अगल्याउने वा छुट्याउने कुनै कारण छैन र यसरी छुट्याउनु विभेदकारी समेत हुन जान्छ । त्यसैले यसलाई 'लैङ्गिक तथा यौनिक अल्पसंख्यकको विवाह' भनि अरुबाट अलग्याएर छुट्याएर व्याख्या गर्नु भन्दा पनि जसरी कुनै दुई उमेर पुगेका व्यक्तिहरू बीच विवाह गर्न कानूनमा जात, जातीयता, क्षेत्रियता, धर्म, वर्ण, आर्थिक अवस्था, इत्यादीको आधारमा बन्देज लगाइँदैन त्यसै गरी हाल प्रचलित ऐन कानूनले विवाह गर्न लैङ्गिकताको आधारमा लगाएको बन्देजलाई हटाउने भनि बुझ्नुपर्छ ।

४.२ अन्यकरण नगर्ने भन्नाले विवाह सम्बन्धी प्रचलित ऐन कानून समावेशी बनाउने हो । ऐन कानूनमा प्रयुक्त प्रावधान तथा भाषाले पनि अन्यकरण गर्नुहुँदैन । जस्तै कुनै महिला र पुरुष बीच विवाह गर्दा 'विवाह दर्ता' दिइन्छ, महिला-

महिला वा पुरुष-पुरुष बीच विवाह गर्दा 'समलैङ्गिक विवाह दर्ता' भनेर दिनुहुँदैन । यसले पुनः विषमयौनिक (Heterosexual) व्यक्तिहरूको केन्द्रियता र वर्चस्वतालाई पुनरुत्पादन गर्दछ ।

४.३ पारलैङ्गिक (Transgender) तथा अन्तरलिङ्गी (Intersex) व्यक्तिहरूलाई अन्यकरणमा नपार्ने । 'महिला' भन्नाले त्याचलैङ्गिक महिला (Cis woman) मात्र नभएर पारलैङ्गिक महिला (Trans woman) र अन्तरलिङ्गी यौन विशेषताका महिला पनि बुझ्नुपर्छ । 'पुरुष' भन्नाले त्याचलैङ्गिक पुरुष (Cis man) मात्र नभएर पारलैङ्गिक पुरुष (Trans man) र अन्तरलिङ्गी यौन विशेषताका पुरुष पनि बुझ्नुपर्छ । हुन त यी विषय लैङ्गिक पहिचान (Gender Identity) को विषय हुन् र यौन अभिमुखिकरण (Sexual orientation) भन्दा फरक विषय हुन् तथापि विवाहको कुरामा अन्तर्सम्बन्ध रहेको छ ।

४.४ पुरुष र पुरुष बीचको विवाह वा महिला र महिला बीचको विवाह हुँदैमा ती व्यक्तिहरू समयौनिक (Homosexual) वा Gay/Lesbian भनि बुझ्नुहुँदैन । अब विषमयौनिक (Heterosexual) व्यक्तिहरूलाई आफू भन्दा फरक लैङ्गिकताका व्यक्तिहरू तर्फ मात्र यौन तथा प्रणयात्मक आकर्षण हुने भएकाले उनीहरूले विवाह गरेमा आफूभन्दा फरक लैङ्गिकताको व्यक्तिहरूसँग नै गर्ने भए । समयौनिक (Homosexual) व्यक्तिहरूलाई आफू भजस्तै लैङ्गिकताका व्यक्तिहरू तर्फ मात्र यौन तथा प्रणयात्मक आकर्षण हुने भएकाले उनीहरूले विवाह गरेमा आफू जस्तै लैङ्गिकताको व्यक्तिहरूसँग नै गर्ने भए । द्वियौनिक (Bisexual) व्यक्तिहरू महिला पुरुष दुबै तर्फ आकर्षण महसुस गर्ने हुँदा दुई मध्ये एक जोसँग विवाह गर्न सक्ने भए । वा सर्वयौनिक (Pansexual) व्यक्तिहरू जुनसुकै लैङ्गिकताका व्यक्तिसँग विवाह गर्न सक्ने भए ।

**५) भाषा प्रयोग सम्बन्धी**

५.१ ऐन कानून लगायत जता पनि भाषा प्रयोगमा पति - पत्नी वा श्रीमान् - श्रीमती जस्तो भाषाको प्रयोग गरिन्छ । वैवाहिक समानतापछि यसमा सामञ्जस्यताको लागि सरल उपाय भनेको 'पति' र 'पत्नी' भनि दुई कोष्ठक राखिने ठाउँमा 'दम्पत्ति' शब्दावलीले प्रतिस्थापन गर्ने । जस्तै विवाह दर्ताको प्रमाणपत्रमा तालिका बनाई दुई ठाडो विभाजन गरिन्छ र एकातिर 'पतिको विवरण' र अर्कातिर 'पत्नीको विवरण' लेखिन्छ । त्यस्तो अवस्थामा दुबै कोष्ठकमा 'दपत्तिको विवरण' भन्ने शब्दले प्रतिस्थापन गरे सबैलाई समावेशी हुनेछ । बैंक फारमहरूमा वा नागरिकता प्रमाणपत्र लगायतमा पति/पत्नीको नाम भन्ने महलको सट्टा दम्पत्तिको नाम भन्ने महल राख्न सकिन्छ ।

५.२ पुरुषहरूलाई 'पति' र महिलाहरूलाई 'पत्नी' शब्दावली छन् तर गैर-द्वयसांखिक व्यक्तिहरूलाई सम्बोधन गर्ने छुट्टै शब्दावली र भाषाको विकास भएको छैन, तसर्थ लैङ्गिक तटस्थ शब्द 'दम्पत्ती'ले नै सम्बोधन गरिनुपर्छ ।

जरुक्सना Esan

## ६) अन्य कानूनहरूमा संशोधन

६.१ प्रश्न नं २ र ३ सँग समेत सम्बन्धित रहि विवाह सम्बन्धीको कानून समावेशी बनाएपछि विवाहसँगै सम्बन्धित अरु विषयवस्तु र तिनका कानूनमा पनि संशोधन र परिमार्जन आवश्यक हुन्छ । ती विषयहरूलाई पहिचान गरि देहाय बमोजिम सूचिकरण गरेका छौं ।

(क) सम्बन्ध विच्छेद सम्बन्धीको कानून,

(ख) सम्पत्ती सम्बन्धीको कानून (अंशबण्डा, अंश मुद्दा, मानाचामल, आपुतालि इत्यादि),

(ग) परिवार सम्बन्धीको कानून (परिवारको परिभाषा, एकासगोलको परिभाषा, इत्यादि),

(घ) बालबालिका सम्बन्धीको कानून (धर्मसन्तान सम्बन्धी, समलैङ्गिक दम्पत्तीका सन्तानहरू सम्बन्धी, इत्यादि),

(ङ) कृत्रिम वीर्यसेचन (Artificial insemination), स्थानापन्न मातृत्व (Surrogacy), In vitro fertilization (IVF), लगायतका सेवा सुविधाको उपलब्धता सम्बन्धीका कानून,

(च) धर्मसन्तान राख्ने सम्बन्धीका कानून,

(छ) समलैङ्गिक दम्पत्तीका सन्तानहरूले अभिभावक(हरू)का नाममा जन्मदर्ता, नागरिकता प्रमाणपत्र पाउने सम्बन्धी कानून ।

६.२ प्रश्न नं १ सँग समेत सम्बन्धित लैङ्गिक तथा यौनिक अल्पसंख्यकका अन्य हक अधिकारको सम्बन्धमा के कस्ता कानूनी व्यवस्था आवश्यक छ भन्ने विषयमा अर्को महत्वपूर्ण विषय लैङ्गिक पहिचानको कानूनी मान्यता सम्बन्धी हो । लैङ्गिक पहिचानको कानूनी मान्यता सम्बन्धी ऐन कानून निर्माण एवं संशोधनको आवश्यकता छ । यसको लागि लैङ्गिक पहिचान सम्बन्धी छुट्टै ऐन बनाउने र प्रमाणपत्र तथा परिचयपत्रहरूसँग सम्बन्धित ऐन कानून संशोधन हुन आवश्यक छ ।

यस विषयमा हामी अनुसन्धान गर्दै प्रतिवेदन तयार गर्ने प्रक्रियामा छौं । लैङ्गिक पहिचान ऐन कस्तो हुनुपर्छ भन्ने एउटा नमूना ऐन समेत तयार गर्ने कार्य हुँदैछ । र त्यसका साथै लैङ्गिक पहिचानको हकमा अरु कुन मौजुदा ऐन कानून संशोधन हुनुपर्छ भन्ने समेतको सूचिकरण गर्दैछौं । यो कार्य कार्तिक सम्म समापन हुने अनुमान गर्दछौं र सो सामाग्री तयार भएपछि यहाँलाई अवश्य नै उपलब्ध गराउनेछौं ।

लैङ्गिक पहिचान सम्बन्धीका ऐन कानूनमा मौजुदा कानूनले के कसरी सम्बोधन गर्न सकेको छैन भन्ने विस्तृत जानकारीका लागि देहायको स्रोत सामाग्रीहरू उपयोगी हुनेछन् :-

- An analysis of gender identity laws in Nepal, Rukshana Kapali, 2021.

जरुक्सना Esan

https://ia904505.us.archive.org/7/items/an-analysis-of-gender-identity-laws/An%20analysis%20of%20gender%20identity%20laws.pdf

- रुक्शना कपाली र इशान रेग्मी समेत वि. नेपाल सरकार समेत रीट निवेदन (रीट नं ००७-WO-०६९५) https://archive.org/details/rukshana-kapali-esan-regmi-v.-government-of-nepal-scanned/
- लैङ्गिक पहिचानको अधिकार सम्बन्धी सन् २०२० का मागपत्रहरू https://nepalcfc.org/wp-content/uploads/DemandSheetBook_Ecopy.pdf
- गृह मन्त्रालयको अन्यलिङ्गी निर्देशिका: मानव अधिकारको हनन https://nepalcfc.org/wp-content/uploads/Anyalingi_Ecopy.pdf

६.३ प्रश्न नं १ सँग नै सम्बन्धित जबरजस्ती करणी बारे मुलुकी अपराध संहिता २०७४ पनि संसोधन हुन आवश्यक छ । मौजुदा ऐनले जबरजस्ती करणीको पीडक पुरुष र पीडित महिला मात्र भन्ने संकुचित दायरा राखेको छ जसकारण अरु व्यक्तिहरू जबरजस्ती करणीको शिकार भएमा न्याय पाउने कुनै कानूनी आधार नै छैन ।

यस सम्बन्धी हामीले गृह मन्त्रालयबाट मिति २०७८/०१/०२ शा.सु. ०७७/०७८-१६ च.नं. ३०१९ को पत्र समेत प्राप्त गरेका छौँ । उक्त पत्र अनुसार पुरुषले पुरुषलाई जबरजस्ती करणी गरेको भन्ने कुरा जबरजस्ती करणीको कसूरको परिभाषा अन्तर्गत नपर्ने, महिलाले महिलालाई जबरजस्ती गरेको उजुरी नपरेको, पारलैङ्गिक (ट्रान्सजेण्डर) पुरुष पीडित भएको हकमा जबरजस्ती करणी नमानिने तर पारलैङ्गिक (ट्रान्सजेण्डर) महिला पीडित भएको हकमा कानूनी व्यवस्था नभएको, र कुनै जबरजस्ती करणीको कसूरमा पुरुष र महिला बाहेकको लैङ्गिक पहिचान भएको व्यक्ति पीडित भएको अवस्थामा कानूनी उपचारको स्पष्ट व्यवस्था नभएको तर पीडक भएमा विद्यमान मुलुकी अपराध संहिता २०७४ बमोजिम हुने भनि उल्लेख भएको छ । उक्त पत्र यस लिङ्कबाट पनि प्राप्त गर्न सकिन्छ । https://ia601406.us.archive.org/32/items/010-77-78_202107/010-77-78.pdf

गत वर्ष नै झापामा दुई पुरुषले अर्को पुरुषलाई जबरजस्ती करणी गरेको समाचार प्रकाशमा आएको थियो । तर कानून नभएकै कारण सो मुद्दा समेत दर्ता हुन सकेन ।[1] तसर्थ जबरजस्ती करणी सम्बन्धीको कानूनी व्यवस्था

[1] https://newsjhapa.com/%E0%A4%9D%E0%A4%BE%E0%A4%AA%E0%A4%BE%E0%A4%AE%E0%A4%BE-%E0%A4%AF%E0%A4%BF%E0%A4%A8%E0%A5%88-%E0%A4%AA%E0%A5%81%E0%A4%B0%E0%A5%81%E0%A4%B7%E0%A4%B2%E0%A4%BE%E0%A4%87-%E0%A5%A8-%E0%A4%9C%E0%A4%A8/

Type text here

रुक्शना Esan

अविलम्ब संशोधन गरि 'कुनै महिलालाई'को सट्टा 'जुनसुकै व्यक्तिले जुनसुकै व्यक्तिलाई' र 'कुनै बालिकालाई'को सट्टा 'कुनै नाबालिगलाई' राखिनुपर्छ ।

६.४ प्रश्न नं १ सँग नै सम्बन्धित मुलुकी अपराध संहिता २०७४ मा अप्राकृतिक मैथुन जस्ता अवधारणा र शब्दावली हटाइनु महत्वपूर्ण छ । कुनै यौन क्रियाकलाप कसरी प्राकृतिक वा अप्राकृतिक हुन्छ ? यौन चाहना आफैमा प्राकृतिक गुण वा विशेषता हो र यौन उत्तेजनाका लागि गरिने व्यक्ति स्वयंले गर्ने सबै अभ्यासहरू वा अरुसँग सहमतीमा गर्ने सबै अभ्यासहरू प्राकृतिक वा अप्राकृतिकको दायरामा हुँदैन । कानूनले सहमति बगेर कसैको मञ्जुरी बिना जबरजस्ती गरिने करणीलाई दण्डित गर्ने हो । कुनै बलात्कार अप्राकृतिक ठहर्याए, कुनै बलात्कार प्राकृतिक हुने भयो । यस्ता अवधारणाहरू सृजित गराएमा जबरजस्ती करणीको दण्डमा पनि विभेद कायम हुन्छ । हाम्रो कानूनले करणीको परिभाषालाई फराकिलो बनाएर योनीमा शिश्न पसाउने बाहेक गुदद्वार मुख लगायतमा कुनै वस्तु पसाउने समेतको कार्यलाई समावेश गरेको छ । त्यसका साथै 'अप्राकृतिक मैथुन' कुनै वैज्ञानिक अवधारणा नभएर युरोपेली धर्मसंस्कृतिमा आधारित मान्यतलाई उपनिवेशकालीन युगमा विश्वभरी कानून बनाइ लादिएको अवधारणा हो । यो कानूनले विशेषतः समयौनिक र पारलैङ्गिक व्यक्तिहरूलाई उपनिवेशकालीन समयमा अपराधिकरण गर्थ्यो । अब यी उपनिवेशी देशहरू स्वयंले नै अप्राकृतिक मैथुन जस्ता प्रावधानहरू हटाइसके, उपनिवेशको चपेटमा परेका देशहरूले पनि क्रमशः हटाउँदैछन् भने कहिल्यै बेलायती उपनिवेशमा नपरेको देशले यस्तो प्रतिगामी शब्दावली तथा प्रावधानहरू राख्नु उचित छैन ।

६.५ माथि उल्लेखित विषयहरू लैङ्गिक तथा यौनिक अल्पसंख्यकका अन्य हक अधिकारको सम्बन्धमा अहिले जल्दोबल्दो विषयहरू मात्र हुन् । ऐन कानूनले समेट्न नसकेको वा सम्बोधन नभएका विषयहरू यतिमा मात्र सीमित छैनन् ।

**<u>७) स्रोत सामाग्रीहरू</u>**

यस विषयमा थप अध्ययन प्रयोजनार्थ देहायका स्रोत सामाग्रीहरू उपयोगी हुन सक्छन् ।

- https://nepalcfc.org/mainresources/
- रुक्शना कपाली विरुद्ध नेपाल सरकार समेत रीट निवेदन (रीट नं ००७-WO-०९७३) https://archive.org/details/rukshana-kapali-v.-government-of-nepal/
- https://archive.org/details/@queer_youth_group_nepal

रुक्शना

Esan

सर्वोच्च अदालतको आदेश बमोजिम नेपाल सरकारद्वारा गठित समितिले २०७१ मा नेपाल सरकार समक्ष पेश गरेको समलिङ्गी विवाहसम्बन्धी अध्ययन प्रतिवेदन अध्ययन गर्दा त्यसमा धेरै अवधाणागत त्रुटि लगायत समावेशिताको समस्याहरू देखेका छौँ । उक्त प्रतिवेदन र त्यसमा प्रयुक्त भाषा अन्तरलिङ्गी व्यक्तिहरू र पारलैङ्गिक व्यक्तिहरको सवालमा मैत्रीपूर्ण छैनन् । उक्त प्रतिवेदनको अध्ययन भएको र तयार भएको समय भन्दा धेरै कुराहरू अहिले फरक परिसके । तसर्थ उक्त प्रतिवेदनलाई नै सर्वाधार मानि कार्यसम्पादन नगर्न हामी निवेदनार्थः छौँ ।

यस प्रक्रियामा हामी पनि संलग्न हुन चाहन्छौँ ।

**भवदीय,**


इशान रेग्मी
कार्यकारी निर्देशक
क्याम्पेन फर चेन्ज (Campaign for Change)
संस्था दर्ता नं : १६८३०१/७३/७४
पत्र चलानी नं : १/७८/७९
campaignforchange17@gmail.com




रुक्शना कपाली
कार्यकारी निर्देशक
क्वयेर युथ ग्रुप (Queer Youth Group)
संस्था दर्ता नं : २४४९३५/०७७/०७८
पत्र चलानी नं : १/७८/७९
queeryouthgroup.nepal@gmail.com


***